## १९८८/१९९३/१९९९ सालको

## यसरी निरुत्साहित गरियो मृत्यदण्ड कार्यान्वयनलाई

### भीमशमशेर (१९८८ साल)

अदालत... का हाकिम कारिन्दाले यथोचित उप्रान्त हाम्रो ऐलेसम्म चली रहेको ऐनले ज्यान सजाय हुने भैरहेको कलम कलममा सुधार गर्नुपर्छ कि भन्ने विचारले ऐलेसम्म ज्यान जाने कसूर गरे पनि दामल् मात्र हुने ब्राह्मण दशनाम सन्यासी स्त्री जातीहरूको लगत् झिकाई हेरी बक्सँदा पनि इनिहरूबाट दामल् हुने कसुर बढदै आएको नदेखिएकाले ज्यान सजाय हुनेमा सो सजाय नगरी नसिहद हुने किसिमको अरु कडा सजाय गर्नामा ठीक होला हवैन यसमा भाई भारदार गुरूप्रोहित शास्त्रीहरू र अफिसर पगरी राखी छलफल गरी सबैको राय के हुन्छ नतिजा जाहेर गर्नु भन्ने हामिबाट हुकुम बक्स्ये बमोजिम् छलफल हुँदा मनुस्मृति याज्ञवल्क्य इत्यादि धर्मशास्त्रहरूमा बध दण्ड र सबै कलमको अङ्गभङ्ग धेरै कलममा लेखिएको छ ता पनि धेरै कलमको वध दण्ड र सबै कलमको अङ्गभङ्गको सजाय नगरी अरू काल अनुसारको दण्ड सजाय गर्ने चली शकेको प्रत्यक्ष देखिएको र "अनुबन्ध परिज्ञाय देशकालौ च तत्वतः । सारापराधौ चालोक्य दण्ड दण्डेयषु पातयेत् ॥" भन्ने मनुस्मृतिमा र "ज्ञात्वापराधं देशं च कालं बलमथापि वा । वयः कर्म च वित्तञ्च दण्ड दण्डेयषु पातयेत् ।" भन्ने याज्ञवल्क्यमा भनी भएको अर्थात राजाले दण्ड सजाय गर्दा अपराधका

सम्बन्ध देश काल मतलव अपराध यथार्थ विचार गरी गर्नु भन्ने मनु र अपराध देश काल बल उमेर काम धन सबै विचार गरी अपराधीलाई राजाले दण्ड गर्नु भन्ने याज्ञवल्क्यको बचन भएको उसमा पनि मुख्य "ब्राह्महा च सुरापश्च स्तेयी च गुरुतत्पगः ॥ ऐते सर्बे पृथक् ज्ञेया महापातकिनो नराः ॥ चतुर्णामपि चैतेषां प्रयश्चित्तमकुर्वताम् ॥ शारीरं धनसंयुक्तं दण्डं धर्म्य प्रकल्पयेत् ॥ गुरुतल्पे भगः कार्यः सुरापाने सुराध्वजः । स्तेये चं चश्वपदं कार्य ब्रह्महण्यशिराः पुमान् ॥ असंभोज्या ह्यसंयाज्या असंपाठ्या विवाहिनः ॥ चरेयुः पृथिवी दीनाः सर्वधर्म वहिष्कृताः ॥ प्रायश्चित्तन्तु कुर्वाणाः सर्ववर्ण यथोदित्तम् ॥ नाङ्कया राज्ञा ललाटे स्युर्दाप्यारतुंत्तम साहसम् ॥ आगस्सु ब्राह्मणस्यैव कार्यो मध्यमसाहसः ॥ विवास्यो वा भवेद्राष्ट्रात्सद्रव्यः सपरिच्छदः ॥ इतरे कृयवन्तस्तु पापान्येतान्यकामतः ॥ सर्वस्वहारमर्हन्ति कामतस्तु प्रवासनम् ॥" अर्थात प्रायश्चित्त नगरेका पक्षमा मातृगामीहरूलाई भग चिन्ह सुरापान् गर्नेलाई सुराध्वजको चिन्ह चोर्नेलाई कुकुरका पाईलाको चिन्ह ब्रह्महत्या गर्नेलाई मुढकट्टाको चिन्हले डामी सर्वधर्मबाट बहिष्कृत गरी देश घुमाई निकालि दिनु प्रायश्चित गरेका पक्षमा नडामी खाली देशनिकाला गरिदिनु भन्ने मनुस्मृतिका वचन हुनाले प्राणदण्ड दिनुभन्दा अङ्कित आजन्म कारागार बास अर्थात् खोदि दामल् गरी जन्मभर कैद राखदा अपराधीका मन्मा पशचाताप गरी प्रायश्चित पनि हुनजाने नकाटिनाले अगतिवाट समेत बचने हुनाले दुनिञा सम्बन्धि कसुरमा ज्यान सजाय नगरी तेस्को सट्टा दामल्

गर्ने गरी केही वर्ष अपराधको घटबढ के हुन आउँछ विचार गरी तेसपछी ऐन गरी बक्सन बेसै होला भन्ने लाग्छ भनी शास्त्रीहरूले भनेको र भारादार गुरूप्रोहित अफिसर पगरीहरूले पनि अबलाई गद्दी राजकाज जंगी ऐनमा लेखिए बाहेक अरु जाने कलममा दामल् गरी जन्म कैद गरी दिए पनि सजाय पुग्ने अरु सान्हा दुनिआलाई पनी धेरैसम्म देखी रहने नसिहद हुन जाला भन्ने र हाल् दामल् गरी पछी अपराधको घटबढको नतिजा हेरी ५/७ वर्ष पछी ऐन गरी बक्सन पर्ला भन्ने समेत् रायहरू लेखी सहीछाप गरी दिएको व्यहोरा मुखत्यार र कौशल मार्फत् हाम्रा हजुरमा जाहेर भयो अब उप्रान्त ज्यान् काट्न मार्नु भन्ने र ज्यान काट्न मार्न प्राइम्मिनिष्टरको तजबिज भनी ऐन ऐनमा लेखिए मध्ये गद्दी राजकाज जंगी ऐनमा लेखिए जती कुरामा सोही ऐन बमोजिम गर्नु गद्दी राजकाज जंगी ऐनमा लेखिएदेखि बाहेक ज्यानमारा समेत अरु ऐन ऐनमा ज्यान लिनु काटिमारि दिनु भन्ने र काट्ना मार्नामा प्राइम्मिनिष्टरको तजविज भनी लेखिएकोमा समेत अब उप्रान्त सो बमोजिम गर्नु पर्दैन, काट्ना मार्नालाई लालमोहर भै शकेको सजाय दिन बाँकी रहेको र अब परी आउँने समेत ज्यान लिनु काटिमारि दिनु भनी ऐनमा लेखिए जती कलममा ऐन बमोजिम् दामल् गर्नु काट्ना मार्नामा प्राइम्मिनिष्टरको तजबिज भनी लेखिएकोमा दामल् गर्नालाई जाहेर गरी सदर भए बमोजिम् गर्नु साधुले जारीमा ज्यान् काट्न पाउँने खतमा पनी ज्यान् काट्न पाउँदैन ऐन बमोजिम् अरु खतरा जुन सजाय रोजदछ सो मात्र गर्न पाउँछ ऐनको रीत पुऱ्याई गर्न दिनु लेखिएका दामलीलाई

बाहिरबाट ल्याएको र आफ्नु समेत खान नदी सरकारिया ठेकीएको सिधा मात्र खुवाई ज्यान मार्नकै नियत उद्योग गरी लुकी छली मार्ने कसुरको अपराधीलाई गोला समेत् हाली र सो बाहेक अरु कसुरदारलाई ऐन सबाल बमोजिम् कसुर अनुसार नेल गल्फँदी हतकडी जो हाल्नु पर्ने हाली थुन्ने गर्नु ज्यान जाने खतमा दामल् गर्नु परेको कलम कती पर्दो रहेछ साविकको लगत् समेत् देखिने गरी यो सनद दाखिल भएका वर्ष वर्ष दिनमा कौशल् मार्फत जाहेर गर्नु भनी सदर मोफसलका सम्बन्धवाला अड्डाका नाउँमा सनद गरी पठाई ५ वर्षसम्मको नतिजा हेरी ५ वर्ष उप्रान्त सबै ठाउँबाट आएको फाट जाहेर गर्नु र ऐन बनाउँनालाई हामिबाट हुकुम बक्से वमोजिम् गर्नु भन्ने १९८८ साल आषाढ २३ गते रोज ३ मा यस अड्डाका नाउँमा खड्गनिसाना सनद गरी बक्सेको हुनाले सो बमोजिम् गर्नु भन्ने व्यहोराको······ अदालतका नाउँमा सनद गरी वक्सनु पर्ने ठहराञ्यू जो मर्जि हुकुम भनी कौशलका हाकिम् कारिन्दाले हाम्रा हजुर्मा विन्ती पार्दा जाहेर भयो तसर्थ सो ठहराएकोमा हामिबाट पनी सदर गरी बक्सेको छ, सो बमोजिम् गर्ने काम गर इति सम्वत् १९८८ साल श्रावण ४ गते रोज १ शुभम्-

## जुद्धशमशेर (१९९३ साल)

आगे····· अदालत के हाकिम कारिन्दाहरूके यथोचित उप्रान्त राजकाज जंगी ऐनले ज्यान काटीनेमा बाहेक अरु ऐन ऐनमा ज्यान लिनु

भनि र काट्न मार्नामा तजबीज भनि लेखियाको समेतमा ज्यान नलिनु दामल गर्नु जारीको खतमा साधुले ज्यान काटन पाउने खतमा पनि ज्यान काटना पाउदैन अरु खतरा जुन सजाए रोज्छ सो मात्र गर्न पाउँछ ज्यान जाने खतमा दामल गर्नु परेको कलम कति पर्दो रहेछ साविकको लगत समेत देखिने गरी यो सनद दाखिल भएका वर्ष दिनमा कौशल मार्फत जाहेर गर्नु भनि सनद गरी पठाई ५ वर्षसम्मको नतिजा हेरी ५ वर्ष उप्रान्त सबै ठाउँबाट आएको फाँट जाहेर गरी ऐन बनाउनलाई हुकुम बक्से बमोजिम गर्नु भन्ने समेत व्यहोराको १९८८ साल श्रावण ४ गतेका सनद मुताविक ज्यान जाने खतमा दामल हुने भएको ९३ साल श्रावण ३ गतेका दिन देखि ५ वर्ष भुक्तान भएको सो सनद भई गयापछि सनद वमोजिम आउनु पर्ने ज्यान जाने खतमा दामल हुने अदालत अमिनिहरूमा परेको मुद्दाको ५ वर्षको पूरा जाहेरी धेरै अड्डाको आउँदै नआएको आय पठाएसम्मको जाहेरीमा पनि कुनै अड्डाले साल भरमा परेको मुद्दासम्म लेखेको कुनै अड्डाले परेको मुद्दा नदेखाई साल भरमा ज्यान जाने षर्तमा दामल गर्ने गरी फैसला भए मुल्तबी रहे झुट्टा पोल गरेको ठहरी छिनियाको मुद्दासम्म मात्र लेखियाको देखियाकोबाट साल भरमा ज्यान जाने षतमा दामल हुने किसिमको मुद्दा साल सालमा यत्तिकै परेको रहेछ भनि यकिन हुन नसक्ने भएकोले ज्यान जाने षतमा ज्यान नलिई दामल गर्ने सनद भएदेषि पछि कर्तव्य गरी ज्यान मार्‍या भने मुद्दा परेको ज्यान जाने षतमा ज्यानै सजाय हुने भैरहेको वषतमा परेको भन्दा घटीबढी के रहेछ भनि विचार गर्नै नपाएको वेहोरा झिकाइ आई रहेको ज्यान जाने षतमा दामल गर्ने सनद नहुदै अघि ८७ साल श्रावण ४ गतेदेषि ८८ साल

श्रावण ३ गते तक वर्ष १ मा कसुर साबित ठहरे ज्यान सजाय हुने अदालत अमिनिमा परेको मुद्दाको लगत समेत कौशल मार्फत हाम्रा हजुरमा जाहेर भयो तसर्थ लेषिया बमोजिम सबै अड्डाको पूरा सालको ठिक जाहेरी नआएकोबाट ज्यान सजाय हुने मुद्दा परेको घटीवढीको प्रष्ट यकिन हुन नसकेको हुनाले अब फेरि ५ वर्षको नतिजा विचार गर्ना निमित्त ९३ साल श्रावण ४ गतेमा भइरहेको सनद बमोजिम गर्ने गराउने गरी वक्सेको छ ९३ साल श्रावण ४ गतेदेखि ५ वर्षलाई अघि ८८ साल श्रावण ४ गतेका सनद बमोजिम गर्ने गराउने र पठाउनु पर्ने साल सालको जाहेरी साल सालै जाहेर नगरी बस्ने हाकिमहरूलाई ऐन बमोजिम जरिवाना गरी यो सनद नहुदै आयेकी जाहेरी पठाउनु पर्ने बाँकि रहेको अड्डाले वाँकि रहेका जति जम्मै सालको यो सनद पुगेका मितिले १५ पन्ध्र दिँ भित्र र ९३ साल श्रावण ४ गतेका मितिदेखिका लाई वर्ष दिं पुगेका मितिले ७ दिं भित्र हरेक साल ५ पाँच वर्षसम्म अदालत अमिनिले जिल्ला गौडा गोश्वारा गढीद्वारा जाहेर गर्नु म्याद भित्र जाहेरी नआए जिल्ला गौंडा गोश्वारा गढीबाट पनि बाटाका म्याद नाघेका ७ दिं भित्र जाहेरी नपठाउने हाकिमलाई तरतागेता जरीवाना समेत जो गर्नु पर्ने गरी झिकाई सनद बमोजिमको रित पुऱ्याई प्रष्ट खोली जाहेर गरे नगरेको समेत जाँची दुरुस्त भई सकेपछी ३ दिं भित्र कौशल मार्फत जाहेर गर्नु लेखिया बमोजिम साल लालको जाहेरी वर्ष दिं पुगेका मितिले ३५ पैत्तिस दिँ भित्र कौशलमा आई नपुगे जाहेरी नपठाउने अमिनि अदालत गौडा गोश्वारा गढीका हाकिमलाई हाम्रा तजविज माफिक सजाय हुने छ भन्ने व्यहोराको अदालत अमिनि गौडा गोश्वारा गढीका नाउँमा सनद गरी पठाई दिनु भन्ने समेत व्यहोराको

यस कौशलका नाउँमा १९९३ साल भाद्र ८ गते रोज १ मा षङ्ग निसाना सनद गरी बक्सेको हुनाले सो बमोजिम गर्नु भन्ने व्यहोराको अदालतका नाउँमा सनद गरी पठाउनु पर्ने ठहराई कौशलका हाकिम हाकिमबाट पनि सदर गरी वक्सेको छ सो बमोजिम गर्ने काम गर इति सम्वत् १९९३ साल भाद्र ११ गते रोज ४ शुभम् ।

## जुद्ध शमशेर (१९९९ साल)

आगे...... अदालतका हाकिं कारिन्दा के यथोचित उप्रान्त राजकाज जङ्गी ऐनले ज्यान काटिनेमा बाहेक अरु ऐनमा ज्यान लिनु भनी र काट्ना मार्नामा तजवीज भनी लेखिएको समेतमा ज्यान नलिनु दमल गर्नु जारी षतमा साधुले ज्यान काटन पाउनेमा पनि ज्यान काट्न पाउँदैन अरू खतरा जुन सजाय रोज्छ सो मात्र गर्न पाउँछ ज्यान जाने खतमा दामल गर्नु परेको कलम कति पर्दोरहेछ साबिकको लगत समेत देखिने गरी सनद दाखिल भएको वर्ष वर्ष दिनमा जाहेर गर्नु भनी सनद गरि पठाई ५ वर्षसम्मको नतीजा हेरी ५ वर्ष उप्रान्त सबै ठाउँबाट आएको फाँट जाहेर गरी ऐन बनाउनलाई हुकुम बक्सेबमोजिम गर्नु भन्ने समेत बेहोराको सदर मोफसलका अदालत अमिनी समेतका नाउँमा ८८ साल श्रावण ४ गतेमा भैगएको सनद बमोजिम सदर मोफसलका अदालत अमिनीबाट आएको फाँट जाहेर हुँदा फेरि ५ वर्षसम्म सो सनद बमोजिम गर्ने गर्नु भन्ने ९३ साल भाद्र ११ गते सनद भैगए बमोजिम ज्यान जाने खतमा दामल भएको सदर मोफसलका अदालत अमिनीहरूवाट साल साल आए झिकाएको

फाँटवारी बनाई मुलुकी अड्डा ऐनसवाल फाँटका हाकिम कारिन्दाले जाहेर गरेको हाम्रा हजुरमा जाहेर भएको हुनाले ९८ साल श्रावण ४ गतेका मितिदेखि अव फेरि ५ पाँच वर्षसम्मलाई दुनियाँ सम्बन्धी कसुरमा ज्यान सजाय नगरी त्यसको सट्टामा दामल गर्ने विषयमा भैरहेको ८८ साल श्रावण ४ गते र ९३ भाद्र ११ गतेका सनद बमोजिम गर्ने गरिबक्सेको छ ९८ साल श्रावण ४ गतेदेखि ५ पाँच वर्षसम्मलाई ८८ साल श्रावण ४ गते ९३ साल भाद्र ११ गतेका सनद बमोजिम गरी ५ पाँच वर्षसम्म हरएक साल वर्ष दिन पुगेका मितिले ७ सात दिनभित्र सदर मोफसलका अदालत अमिनले आफ्नो अपील सुन्ने अड्डा मार्फत जाहेर गर्नु म्यादभित्र जाहेरी नआए अपील सुन्ने अड्डाबाट पनि वाटाका म्याद नाघेका ७ दिन भित्र जाहेरी नपठाउने अदालत अमिनीका हाकिमलाई ऐनवमोजिम तर ताकिता जरिवाना समेत जो गर्नुपर्ने गरी झिकाई सो सनद बमोजिमका रीत पुऱ्याइ स्पष्ट खोली जाहेर गरे नगरेको समेत जाँची दुरुस्त भैसकेपछि ३ दिनभित्र मुलुकी अड्डा ऐन सवाल फाँट मार्फत जाहेर गर्नु लेखिए बमोजिम साल सालको जाहेरी वर्ष दिन पुगेका मितिले बाटोको म्याद बाहेक ३५ पैंतीस दिनभित्र मुलुकी अड्डा ऐन सवाल फाँटमा आई नपुगे जाहेरी नपठाउने अमिनी अदालत अपीलका हाकीमलाइ हाम्रा तजवीज माफीक सजाय हुनेछ भन्ने बेहोराको अमिनी अदालत अपील कोतवाली समेतका नाउँमा र लेखिए बमोजिम अदालत अमिनी अपील कोतवालीलाई समेत सनद भै गएको छ सो बमोजिन गर्नु गराउनु भन्ने सदर अमिनी गोश्वारा

भारदारी न्यायालय समेत जस जसका नाउँमा चाहिन्छ जो चाहिने सनद गरि पठाई लेखिए बमोजिम सनद दाखिल भएको मितिले ५ पाँच वर्ष भुक्तान भएपछि साविक परेको र त्यसपछि परेका समेत लगत खडा गरी निकासा वक्से बमोजिम गर्ने काम गर भन्ने ९९ साल वैशाख १७ गते ४ मा यस अड्डाका नाउँमा खड्ग निसाना सनद गरी बक्सेको हुनाले सो बमोजिम गर्नु भन्ने··· अदालत अड्डाका नाउँमा सनद गरिबक्सनु पर्ने ठहराइ मुलुकी अड्डा ऐन सवाल फाँटका हाकिम कारिन्दाले हाम्रा हजुरमा विन्ति पार्दा जाहेर भयो तसर्थ सो ठहरायकोमा हामीवाट पनि सदर गरिवक्सेको छ सो बमोजिम गर्ने काम गर इति सम्बत् १९९९ साल जेष्ठ ९ गते रोज ६ शुभम् ।

साभारः कानून सम्बन्धी केही ऐतिहासिक अभिलेखहरु

कानून सहप्रकाशन, कानून व्यवसायी क्लब, काठमाडौं

प्रथम संस्करण, २०६३